

महेश-संस्कृत-गुरुकुलम्

महेश-बाल-समूहको प्रथम प्रकाशन

# महेश-बाल-साहित्य-उद्यान


वर्ष-१ अङ्क-१ २०७० चैत्र



**सल्लाहकारहरू**:
स्वामी केशवानन्द गिरि
नीराजन पन्त
नारायणप्रसाद घिमिरे
चिरञ्जीवी खतिवडा
पर्वत घिमिरे
कोमल नेपाल

**सम्पादक**:
मनीष गौतम
सुरज तिमल्सिना

**कम्प्युटर टाइप**:
दीपक सिग्देल
सागर रेग्मी
सन्दीप तिमिल्सिना

**डिजाइनिङ**:
स्वमतशून्यान्यनियोज्यकर्मकरः

**प्रकाशक**:
महेश-बाल-समूह
महेश-संस्कृत-गुरुकुलम्
देवघाट-२, तनहूँ

**वेव साइट**:
www.gurukulam.edu.np

**ईमेल ठेगाना**:
msg@gurukulam.edu.np


## सम्पादकीय........

विद्यापीठका दाजुहरूको उत्साहको प्रतिफलको रूपमा महेश-साहित्य-सङ्गम उदायो । त्यही आज महेश-बाल-साहित्य-उद्यानको प्रेरक बन्न पुगेको छ । २०६४ सालमा स्थापित महेश-बाल-समूह आज साहित्य उद्यानमा आइपुगेको छ। यो नितान्त खुसीको कुरा हो। जहाँ विविध काव्यकलिकाहरू फक्रने अवस्थामा छन् र केही फूलहरुले पूज्य गुरुज्यूको रविकिरणमा फक्रने मौका पाएका छन् । यस उद्यानका फूलहरूले विश्वभरि नै उत्साह, उमङ्ग र विश्वबन्धुत्वको सुगन्ध फैलाउनेछन् भन्ने आशा राख्नु नै पर्छ। हुन त कसैलाई कस्तो गन्ध मनपर्छ कसैलाई कस्तो, तथापि यसमा गुणग्राही महानुभावहरूमा भरपर्छ । विविध छन्दका, विविध विषयका र विविध विधाका चित्र-विचित्र जाई, जुही, चमेलीहरूले यस उद्यानमा फुल्ने अवसर पाएका छन्। श्रोता, पाठक र भावकहरूको मलजलको निरन्तरता रहे मा यी फूलहरूलाई पक्कै पनि चाँडै नै ओइलाउनुपर्ने बाध्यता रहने थिएन होला। यसमा आशावादी रहनुपर्छ। पानी हाल्दा पनि कुनै फूल फुल्दैनन्, पानी नहाल्दा पनि कुनै फूल फूल्न सक्छन्। अतः प्रतिभा स्वस्फूर्त हुँदाहुँदै पनि त्यसमा उत्साहको इन्धनले अझै ऊर्जा थप्नेछ । पहिलो अङ्कमा सबै फूल फक्रन सकेका छैनन्। तथापि प्रायः समूहका सबै सदस्यहरूको अनुभूतिहरूले उद्यानमा स्थान पाएका छन् ।

यस उद्यानमा स्नेहको शीतल जल छर्ने सबै सल्लाहकार गुरुहरू र स्रष्टाहरू प्रति कृतज्ञ छौँ । अन्त्यमा, पुनः अर्का पुस्ताहरू यस उद्यानमा नयाँ नयाँ फूल फुलाउन उत्साहित होऊन् भन्दै, समस्त गुरुहरू, सदस्यहरू, पाठकहरू र अभिभावकहरूमा नव वर्ष २०७१ को शुभकामना व्यक्त गर्दछौँ ।


मूल्य रु. ३०।-

मनीष गौतम
अध्यक्ष

सुशील वाग्ले
उपाध्यक्ष

सुमन गौतम
कोषाध्यक्ष

श्रीधर सुवेदी
सचिव

अभिप्रताप पाण्डे
सहसचिव

## अन्य विशेष सदस्यहरू

- कृष्णप्रसाद पौडेल
- विदुर खनाल
- रञ्जित आचार्य
- सुरज तिमल्सिना
- ईशान सुवेदी
- कौशल आचार्य
- सङ्गम पौडेल
- अनमोल धिताल
- सर्वेश्वर ढुङ्गेल
- प्रज्वल खनाल
- ऋषिराम पौडेल
- प्रभाकर घिमिरे
- कमल खतिवडा
- प्रकाश धिताल

# बालकवि-सूची

*-तन्वीच्छन्दः*

पावनभूमौ विलशति कुटिरं रामगुरोरिह करुणसुभावैः
वैदिकमन्त्रः श्रुतिमधुरतया गुञ्जति कोमलमधुरविरावैः ।
पूजनमाप्तं गुरुकुलमपि किं धर्मसनातनसरणिरजोभिः
मेलनविन्दुं प्रतिदिनमगमत् बालकसंहतिरिह सुमनोभिः ॥१॥

अद्य तु बालाः सुमृदुलकलिका ज्ञानकलाकृतिकुलकुसुमानां
वाहयमाना गुणगणसुरभीः श्वो विकशन्ति हृदि हि सकलानाम् ।
काव्यकलापैः कविवरसमतां यान्ति सदा गुरुवरकरुणाभिः
बालककालः सुखमय अभवच्छङ्करपूजनविहितकृपाभिः ॥२॥

विश्वसमाजो विकशति सततं येन सदा प्रियहितसुखदेन
सुन्दरकाव्यं तदिह निगदितं भावरसायितललितपदेन ।
लेखितुकामाः कविकृतिकवितां नित्यनिरन्तरमपि हितचित्ताः
बालकसङ्घे निगडितमनसो बालकबान्धवगुणगणवित्ताः ॥३॥

रञ्जितचित्रै-र्मृदुदलनिवहै-श्चित्रविचित्रित-नवकुसुमानि
यत्र कशन्ति प्रतिदिनमुषसि प्राप्य सदा गुरुवरचरणानि ।
अष्टमचान्द्रे प्रतिपदि सततं, कूजति बालकगण इह काव्यैः
एष महेशो गुरुकुलपदकः, छात्रगणैः सह विकशतु सभ्यैः ॥४॥

-चिरञ्जीवी खतिवडा
chiranjibi_ck@hotmail.com

# बाटो नियाल्ने गर

*-शार्दूलविक्रीडित छन्द*

कोही लड्दछ मार्ग टेक्न नसकी कोही नजानीकन,
कोही मर्दछ बाँच्न मुस्किल भई यो देश नेपालमा ।
देखिन्छन् अतिक्रूर तुच्छ घटना यो देशमा हर्पल,
हाम्रो देश स्वयं छ नीच पथमा बाटो नियाल्ने गर ॥१॥

बाटो बीच बसेर रुन्छ टुहुरो सुन्दैन कोही पनि,
चल्छन् दाजु र भाइबीच झगडा मिल्दैन कोही पनि ।
पैसाको भरमा परेर अहिले बेचिन्छ आफ्नै घर,
सच्चा एक युवा तिमी यदि भए बाटो नियाल्ने गर ॥२॥

गुञ्जिन्थे स्मृतिवेदका स्वरहरू गुञ्जिन्न ऐले किन,
बग्ने कल्कल त्यो नदी पनि यहाँ छोड्दैछ सुस्ताउन ।
हाम्रो मन्दिर भत्किँदैछ दिनहुँ वास्ता कहाँ हुन्छ र ?,
लाग्ला श्राप शहीदको रगतको बाटो नियाल्ने गर ॥३॥

पैसा मात्र भएर पुग्छ कसरी आमा हराएपछि,
भेट्छौ लक्ष्य लिएर मात्र कसरी बाटै बिराएपछि ।
आफ्नो स्वार्थ लिएर हैन अब हे निःस्वार्थ बाँच्ने गर,
यात्रा यो सजिलो बनाउन तिमी बाटो नियाल्ने गर ॥४॥

साँच्चै नै हिउँ हैन रे हिमनदी आँशु पगाल्दैछ रे
पैसा जीवन हो भनी दशगजा आफैँ ढलाइन्छ रे ।
छोरो निस्कन बाध्य देख्छु अहिले छोडेर आफ्नो घर
आजै शान्ति हराउँदैछ सुन हे बाटो नियाल्ने गर ॥५॥

-सुरज तिमल्सिना
कक्षा-९

## विद्या ठूलो विश्वमा

*-शार्दूलविक्रीडित छन्द*

के बुझ्छन् र गरीब मानिसहरू विद्या ठुलो हो भनी,
आफ्ना सन्ततिलाई पाल्न नसकी धान्छन् अरे जीवनी ।
यस्तो कार्य सदैव हुन्छ कसरी ? यो चित्त रुन्थ्यो यहाँ,
सारा मानवले बुझौँ न अब लौ विद्या ठुलो विश्वमा ॥१॥

आफैँ छर्छु विवेक यो मनुजमा पढ्छन् भने आखिर,
मेरो प्राण गुमोस् बरु म मरुँला सत्कार्यका खातिर ।
बुझ्दैनन् यसको महत्त्व छ ठुलो यो सर्वब्रह्माण्डमा,
मेरो प्राण सदैव भन्छ सहसा विद्या ठुलो विश्वमा ॥२॥

विद्याले अनमोल ज्ञान छरदै मान्छे ठुलो बन्छ रे,
सर्वोत्कृष्ट बनेर त्यो गगनमा गै चन्द्रमा छुन्छ रे ।
यो सानो कसरी भयो जगतमा भन्छन् यही मानिस,
हाँस्दै छाती फुलाइ भन्छु सहसा विद्या ठूलो विश्वमा ॥३॥

विद्यालाई बुझेर पढ्न, सबमा उत्साह फैलाउन,
साथीको ममता र ज्ञान गुरुको आनन्दले पाउन ।
ठूलो व्यक्ति बनेर मर्छु मनमा मेरो छ यो कल्पना,
छाती उच्च गरेर भन्छु सहसा विद्या ठूलो विश्वमा ॥४॥

-सुजन थपलिया
कक्षा ७

## तीन छेस्काहरू

त्यो आकाश
केही छ खास ।
हाँस्दै छ
हो विन्दास ॥१

सूर्य आयो
काग करायो ।
साँझ नहुँदै
मान्छे हरायो ॥२

फूल फक्रियो
कक्रकियो ।
नाम हरायो
खै के दियो ॥३

- रवीन्द्र दाहाल
कक्षा ६

## तान्काहरू

तिम्रो न मेरो
सँगै नाचेर बसौँ
पानी पधेँरो ।
हात पाखुरी धसौँ
कम्मर पनि कसौँ ॥

काकाको बिहा
चिनीबिनाको चिया
जाबो हजार
दक्षिणाको रुपमा
परियो लम्पसार ॥

हजुरबुबा
मलाई भन्नुहुन्थ्यो
बाबु बचुवा
छोड्नै पर्थ्यो संसार
सबै कुरा हचुवा ॥

वादल लाग्यो
अँध्यारो पनि जाग्यो
कृष्णकै हात
जयद्रथ मर्नेछ
केटो केही गर्नेछ ॥

सानो सोचेर
भन्यौ साह्रै घोचेर
सानो दियोले
अँध्यारो हटाउँछ
घनले ठटाउँछ ॥

अभिमन्यु हुँ
घेर्न सक्छौ देखाऊ
नाम लेखाऊ
एक्लाएक्लै भिड्नुछ
आफ्नै बाटो हिँड्नुछ ॥

-अभिमन्यु
ढुङ्गाना
कक्षा ६

## छेस्काहरू

ओ ! किन आयौ ?
कि दिन आयौ ?
फुटेको थाल !!?
ए लिन आयौ ? ॥१

रमाइँदैन भो
कमाइँदैन भो ।
भालुको कठालो
समाइँदैन भो ॥२

लौरी घुमाएर
कि सुम्सुमाएर ।
प्रतिष्ठा खोज्दैछौ
इज्जत गुमाएर ॥३

भात उम्लियो
लाटो सुम्लियो ।
खाक्रै त बज्छ
पोको कुम्लियो ॥४

लाज पचाएर
नाटक रचाएर ।
मान खोज्यौ यहाँ
भालु नचाएर ॥५

कसैलाई छडी
कसैलाई कडी ।
मूर्ख बन्थ्यो राजा
भिरी दामी घडी ॥६

-मनीष बिडारी
कक्षा ७

## नेपाल

*-शार्दूलविक्रीडित छन्द*

सङ्गीतामृतसाथ रम्दछ चरा वैशाख आएपछि,
ढाली राग सधैँ महाकवि बनी त्यो गीत गाएपछि ।
नाच्छन् मत्तमयूर त्यो सुलयले डाँफे र मैना पनि,
सुन्छन् ती वनका लता र झरना भर्दै सुरीलो ध्वनि ॥१॥

बग्छन् कल्कल ती अखण्डगतिमा काली र नारायणी,
फुल्छन् फूल अनेक यो जगतमा सौन्दर्यखानी बनी ।
पाखामा र पहाडमा सुन सखे ! रम्दै थियो कस्तुरी,
हाम्रो देश सुरम्य देखिन पुगोस् तारा उदाएसरी ॥२॥

घण्टानाद र वेदका स्वरहरू गुञ्जिरहून् हर्पल,
पाऊँ सुन्न बिहान शङ्खहरूका आवाज भै तत्पर ।
हाम्रो स्वच्छ हिमालले मुसुमुसु मुस्कान छर्दा जब,
आऊन् हेर्न भनी हिमालयगिरी त्यो देशका मानव ॥३॥

फेवाको शिरमा छ कञ्चन बनी चम्किरहेको हिउँ,
ठूलो भाव विशाल ज्ञानमहिमा साथी कसोरी लिऊँ ।
हात्ती, भालु र नौतले धरहरा देखिन्छ नेपालमा,
ती रामायणका कथाश्रुतिहरू गुञ्जिन्छ नेपालमा ॥४॥

-सुमन गौतम
कक्षा-९

## हाइकु

आँ गरेपछि
काफल झरेपछि
स्वाद आएन ॥

तबला बज्यो
असारे झरीजस्तै
कपाल हल्यो ॥

घाम उदायो
कुनै फूल फुलेन
काव्य फुरेन ॥

-विजय रिजाल
कक्षा ६

## मेरो आह्वान

*-पञ्चचामर छन्द*

म विश्वमा फिजाऊँ यो नवीन ज्ञान सिर्जना,
सधैँ गरुँ यहाँ नयाँ सुकाव्य एक साधना ।
बढेर रङ्गरङ्गमा मिलूँ सधैँ तरङ्गमा ।
छचल्कियोस् कला नयाँ मिलेर भावभङ्गमा ॥१॥

तिमी बनाउ यो जगत् म दिन्छु साथ आपस,
बनाऊ विश्व सृष्टि यो विचित्र साथ झक्मक ।
किताब, लेखनीसँगै म धर्ती कोर्न सक्दछु,
र इन्द्रको ठुलोपना म झट्ट फोर्न सक्दछु ॥२॥

स्वदेश हो ठुलो र मातृभूमि बन्छ पावन,
सधैँ सधैँ मिली बढौँ पूजेर भूतभावन ।
बुझेर आफुलाई नै बढे पुगिन्छ सारमा,
नभुल्नु मार्गमार्गमा र व्यर्थमा विहारमा ॥३॥

अभिप्रताप हूँ स्वयं म विश्व हाँक्न सक्दछु,
पराक्रमी बनी सधैँ म जीत चाख्न सक्दछु ।
जुटौँ जुटाई जुट्नुहोस् जगाई जोशजाँगर,
सरित्सरी सधैँ सरौँ सुकाव्यसाथ सागर ॥४॥

-अभिप्रताप पाण्डे
कक्षा-८

## हाइकुहरू

कस्तो अचम्म
त्यहाँ मान्छे उडेछ
चरा हिँडेछ ॥

ठुलो आवाज
कुनै सानो घण्टीको
आश्चर्य लाग्दो ॥

ऊ जनावर
कालो कालो कुकुर
लामो पुच्छर ॥

ऊ घण्टी बज्यो
बेसरी टिनीटिनी
कालो रातमा ॥

म समुद्र हुँ
कहिल्यै सुक्दिन म
म सँधै उस्तै ॥

-समुद्र रिमाल
कक्षा ६

## नेपाल

मेरो भाव वहन्छ पुष्पवनको नेपाल उद्यानमा,
मैरै साथ रहेर पुग्छ सुन हे नेपाल सम्मानमा ।
मेरो हर्पल गर्छ चिन्तन यहाँ यो देश नेपालले,
अर्को जन्म गराउनेछ सजिलै यो देश नेपालले ॥१॥

हाम्रो जीवन चल्नुमा हरघडी यो देश आधार छ,
आँखा बन्द गरेर हेर मनले नेपालमा विश्व छ ।
खोज्दै छु म अनेकमा मनुजता यी देशमा हर्पल,
मेरो मार्ग नियालिदिन्छ यसले नेपाल हाम्रो घर ॥२॥

डाँडामा सुन कोइली, कुसुमले गर्दै थियो चिर्बिर,
पाखामा मधुमासमा सुमनले मुस्कान छर्थ्यो जब ।
बेहानीपख सर्वदा शिखरमा आदित्य चम्किरहे,
साह्रै सुन्दर हुन्छ अग्रगतिमा नेपाल लम्कीरहे ॥३॥

यो नेपाल म भुल्न सक्छु कसरी सम्भन्छु है हर्पल,
मेरो देश रमाइलो छ महिमा गाएर गाइन्छ र ?
मेरो यो दिलले सदैव सुन हे नेपाल नै गाउँछ,
यो नेपाल भुलेर जाउ म कहाँ भन् सम्भना आउँछ ॥४॥

-शिवराज थपलिया
कक्षा-७

## मानिस जसरी पनि प्रसिद्ध हुनुपर्छ ।

घटं भिन्द्यात् पटं छिन्द्यात् कुर्यात् रासभरोहणम् ।
येन केन प्रकारेण प्रसिद्धः पुरुषो भवेत् ॥

त्रिविक्रमोऽभूदपि वामनोऽसौ स सूकरश्चाटपि स वै नृसिंहः ।
नीचैरनीचैरतिनीचनीचैः सर्वैरुपायैः फलमेव साध्यम् ॥

## मित्र

हुन्छन् मित्र सफा र शुद्ध मनका हुन्नन् विरोधी कतै,
केही स्वार्थ हुँदैन आपसमहाँ टुट्दैन विश्वास नै ।
बाँड्छन् दुःख र भाव आपसमहाँ गर्दैन झगडा कुनै,
विद्या सार्दछ बोल्छ, मिल्छ उसको भाग्छन् सबै दुःख नै ॥१॥

ऐले मित्र भनेर शत्रु हुन गो बन्थ्यो विरोधी सदा,
वास्ता गर्छु भनेर भन्छ तर त्यो विश्वास मार्थ्यो सदा ।
साथी जीवनको अमूल्य चिन हो सोच्नू सदा मानव,
कस्तो शक्ति र भक्ति चल्छ यसमा तोड्ने कहाँको छ र ? ॥२॥

प्यारो हुन्छ सबै र छोड्छ सजिलै शत्रू बनाई किन ?
थ्यो विश्वास तथापि आज उसले बन्दैछ घाती किन ?
साथी गर्दछ साथ पाउन भनी आशा निराशा गऱ्यो,
जस्ले मार्दछ मित्रको मित्रको हृदय यो साथी हरामी भयो ॥३॥

हेला गर्नुहुँदैन हे जनहरू पाइन्छ साथी कहाँ,
साथी केवल एक हुन्छ मनको पाइन्न धेरै यहाँ ।
देख्दैनौ उसको पीडा मनभरी कस्तो थियो रोदन,
देऊ साथ तिमी म भन्छु अहिले के जान्छ तिम्रो भन ॥४॥

-मौसम ढकाल
कक्षा-८

## हाइकुहरू

शिरको टोपी
झर्दैछ जलधारा
नेपाली पेशा ॥१

दशैं-तिहार
पैसाको मारामार
जाबो कागज ॥२

इमान बेच्यौ
स्वाभिमान सिद्ध्यायौ
दुई पैसामा ॥३

हातमा तुम्बा
नेपाली युवाहरू
बबाल झ्याप ॥४

रसिलो आंखा
कतारतिर यात्रा
चन्द्रमा हेर्दै ॥५

-सुदीप शर्मा
कक्षा ६

## सरस्वती

-भुजङ्गप्रयात

मिले साथ तिम्रो म यो देश हाँक्छु,
सधैँ भारतीमा म सत् ज्ञान माग्छु ।
नराम्रा कुरामा चले हात मेरा,
नियाल्नू तिमीले दुराचार सारा ॥१॥

म सत्ज्ञान खोज्छु र बन्छु विवेकी,
म तिम्रै सधैँ साथमा हुन्छु देवी ।
म नेपालमा देख्छु है काटमार,
ममा ती नराम्रा हटाऊ विचार ॥२॥

नियाल्नू तिमीले सधैँ मार्ग मेरो,
नपार्नू कहीँ जिन्दगीमा अधेँरो ।
सुधार्नेछु वाणी म मेरो हरेक,
हुनेछु कुनै दिन् म विद्वान एक ॥३॥

म अञ्जान छु ज्ञानको बाल बत्ती,
सधैँ सत्य बोल्ने ममा देऊ शक्ति ।
सधैँ दुःख हर्ने तिमी हौ विधाता,
मलाई सधैँ ज्ञान देऊ न माता ॥४॥

-रञ्जित आचार्य
कक्षा-९

## गजल

किन किन खराब काम गरेजस्तो लाग्छ ।
आफैँले नै आफ्नो इज्जत हरेजस्तो लाग्छ ॥१॥

साथीहरू टाढै हुन खोज्छन् आजभोलि ।
एक्लो भई बाँचे पनि मरेजस्तो लाग्छ ॥२॥

मेरो जीवन हरेक क्षण फुलोस् भन्थेँ सधैँ ।
वैलिएको फूलसरी झरेजस्तो लाग्छ ॥३॥

जस्ले पनि अघि हाँसेजस्तो गरिदिन्छन् ।
कस्तूरीझैँ गन्ध खोज्न चरेजस्तो लाग्छ ॥४॥

सद्भावना बाँडु भन्छु नजिक कोही छैन,
संसारको भुमरीमा परेजस्तो लाग्छ ॥५॥

मित्र बनाउन खोज्छु शत्रु बन्छन् सबै ।
अञ्जुलिले पोखरीलाई भरेजस्तो लाग्छ ॥६॥

-मनीष गौतम
कक्षा-९

## कविलाई आशीर्वाद

-तोटक छन्द

सुन हे कवि हो र जवान ठिटो,
वद तोटकमा कविता छ मिठो ।
नव भाव रचोस् कविको कविता,
सबको मनमा भरियोस् रमिता ॥१॥

सब ज्ञान बढोस् र सुभाव रहोस्,
कविको बलमा सब विश्व अटोस् ।
कविको मनमा शिवशक्ति बसोस्,
सब काव्यसुधा अझ फैलिरहोस् ॥२॥

सब काव्यहरू अनमोल कृति,
डुलि हिँड्नु सदा हरियो प्रकृति ।
बन विश्वमहाँ तिमी रत्नमणि,
बन मित्र तिमी बन दिव्यमणि ॥३॥

कवि भव्य कलाकृति कौशल हुन्,
परिपूर्ण स्वयं अति निर्मल हुन् ।
जब शब्द यहाँ अलि अक्मकियो,
तब तोटकको कविता सकियो ॥४॥

-कौशल आचार्य
कक्षा-८

## मेरो अनुभूति

-तोटक छन्द

न त फुल्न सकेँ न त भुल्न सकेँ
सबका बिचमा न त खुल्न सकेँ ।
दिन बित्छ त्यसै असहाय बनी
कति बस्नु अनेक उपाय गनी ॥१॥

न उहाँ सुख भो न यहाँ सुख भो
जति धाऊँ तथापि कहाँ सुख भो ।
अनगिन्ति थिए मनका कविता
किन गाइ गरौँ भवमा रमिता ॥२॥

मर या गर या सर अन्य घर
तर किङ्कर भै जगमा नमर ।
नर हौ डरका भरमा नपर
भव सागर यो अब पार तर ॥३॥

रवि हौ कवि हौ रसिलो छवि हौ
भवभूति र माघ र भारवी हौ ।
वन झैँ बन ज्ञान लिइ गहन
बन प्रातमहाँ सिरिरी पवन ॥४॥

-रूपेश रिजाल
कक्षा ७

## काव्य

*-स्रग्विणी*

काव्यको पुष्पको गन्ध यो विश्वमा।
फैली उत्पन्न होस् मञ्जुला भावना।।
काव्यले सत्य कल्याण औ सुन्दर ।
भाव छर्दै बनोस् विश्व एकै घर ।।

छैन थाहा कुनै काव्यको लक्षण ।
तैपनि लेख्न खोज्दैछ यो लेखन ।।
कुद्न चाहन्छु थर्राउँछन् पाउ यी ।
गर्न चाहन्छु ताते उठाऊ तिमी ।।

भारती आज तिम्रो म सेवा गरुँ ।
भक्ति तिम्रो गरी ज्ञानले पूर्ण हुँ ।।
छाइ आभा ममा ज्ञानको दिव्य त्यो।
काव्य रच्ने कला फूलझैँ फक्रियोस्।।

भक्तिई बास भाग्यो परेवा कहाँ ।
काव्य गाई म बोलाऊँ आजै यहाँ ।।
चित्तमा छन् जति दुःख पीडा हरूँ ।
शान्ति फैलाउने काव्य रच्दै मरुँ ।।

-चण्डिका सुवेदी
कक्षा ७

## गजल

कवि बन्ने इच्छा थियो गजलकार बने आज ।
गजल भन्न जाँदैछु म तपाईहरू सबको माझ ।।१।।

हिजो बिहानदेखि मैले काव्य लेख्न सुरु गरैं ।
काव्य पुरा नहुँदैमा भैसकेछ कालो साँझ ।।३।।

गजललाई हराउन तम्सँदैथ्यो एक कवि ।
तर पनि सधैँ जसो गजलले नै गर्थ्यो राज ।।४।।

कापी कलम विना मनमा केही भाव खेल्दै थियो ।
उता पर हेर्दा हेर्दै साबुनबाट निस्क्यो गाज ।।५।।

खोज्दै थिएँ भाषण गर्न केही शब्द मनमा थिए ।
तर पनि किन किन भाषण गर्न भयो लाज ।।६।

-रोहित वाग्ले
कक्षा ८

कुनै पनि कुरा ज्यादै धेरै गर्नुहुँदैन ।

## गेडी

डाँडापारी गाउँमा, नेताजीको पाटी छ ।
बैलरको के कुरा, खसी पनि काटी'छ ॥
-हल्का खाऊँ है, आफ्नो भुँडी नफुटाऊँ है ॥

मिठो रक्सी भट्टिको चमेलीले दिएको ॥
घैंटे भन्थ्यो हिजै हो प्यूँनुसम्म पिएको ॥
-दृष्टि जस्तो छ, विश्व पनि त्यस्तैत्यस्तो छ ॥

बुट्टिटाट नभई कहाँ छोड्छ तासले ।
हार्ने बस्थ्यो झोक्राई, केही जित्ने आशले ॥
-जुवा वाजीले, बास खेद्र्यो साहु काजीले ॥

डल्ले गयो कतार, हतारको हतार ।
पठाउँथ्यो डल्लीलाई, लाख अनि हजार ॥
-के-के गरेर, पैसा सकी बासै सरेर ॥

मन्त्रीजीको भाषण, रत्नपार्क चोकमा ।
टोपी खस्यो डल्लाले, रिसाएको झोकमा ॥
-पैसा गनेर, हिँड्नु हुन्न दादा बनेर ॥

-उत्तम अधिकारी
कक्षा ७

## हाइकुहरू

भेडा बनायो
प्रजातन्त्र दिवस
लौरी पच्छ्र्यायो ॥

कुकुरहरू
चउरमा भुक्दैछन्
एकाबिहानै ॥

दुनो सोझ्यायो
आपका न बापका
लुटाइँ चल्यो ॥

आफ्नो घरमा
कुकुर पनि भुक्छ
मौका मिलाइ ॥

यता र उता
अल्राउण्डर बन्यो
यता न उता ॥

-सन्देश ढकाल
कक्षा १०

## केही छेस्काहरू

माटोमा दाना खोज्दैछु ।
मधुर गाना खोज्दैछु ॥
सडक माथि सुतेर,
घरको छाना खोज्दैछु ॥

मेरी आमा देखिन ।
अनि मामा देखिन ॥
नाङ्गै थिएँ जहिल्यै
कुनै जामा देखिन ॥

हाल खबर हरायो ।
सबै रहर हरायो ॥
पिई चित्त बुझाउँथे,
त्यै नि जहर हरायो ॥

-पुष्पराज पाण्डे
कक्षा ७

## यी मातृभूमि रुँदा

*-शार्दूलविक्रीडित छन्द*

गर्दैछन् अपराध ती जनहरू छैनन् कुनै सज्जन,
टेर्दैनन् अहिले कुनै मनुजले उस्तै छ यो शासन ।
ठूलो त्यो डर लाग्छ यो समयमा मान्छे नराम्रो हुँदा,
हे नारायण ज्ञान देऊ सबमा यी मातृभूमि रुँदा ॥१॥

सुन्दैछौँ किन विश्वमा दिनदिनै यो चित्त जल्ने कुरा,
मात्रै भाषण दिन्छ नेतृगणले हुन्थ्यो कहाँ त्यो पुरा ।
बस्छन् मौन भएर यी जनहरू आमा बिरामी हुँदा,
नेता साथ दिँदैन यो विकृतिमा यी मातृभूमि रुँदा ॥२॥

टुक्रयाइन्छ अमूल्य अङ्ग उनको जिल्ला तथा अञ्चल,
हाम्रा ती धन लुम्बिनी, पशुपति गर्दैछ कोलाहल ।
छैनन् कोही पिलाउने जल यहाँ आमा बिरामी हुँदा,
तिम्रो साथ मिलेन यो धरतिमा यी मातृभूमि रुँदा ॥३॥

यौटा आश लिएर कोशीतटमा संकल्प गर्दैछु म,
सच्चा देश बनाउने हृदयमा विश्वास भर्दैछु म ।
चिन्ता छैन कतै मनुष्यहरूको अस्तित्व जाने हुँदा,
आमाको अब श्राप लाग्छ सुन हे यी मातृभूमि रुँदा ॥४॥

-प्रज्वल खनाल
कक्षा-७

## हाइकुहरू

नमस्ते गर्दा
गमक्क पर्दै थिए
मानका भोका ॥१

लौरी बजायौ
बुढ्यौलीले छोएछ
माघ त गयो ॥२

प्यासीहरू छन्
बजारमा अनेकौँ
भ्रूल हाल है ॥३

इन्द्रेणी हेर्दै
कल्पनामा न डुब
धर्ती छुट्टैछ ॥४

काम न काज
फिलिमे हिराहरू
रमाउँदैछन् ॥५

-सुरेशराज पाण्डे
कक्षा ६

## मुक्तकहरू

कुकुरहरू पौडी खेल्छन् जिब्रो निकाली ।
बलियाले निर्धा पेल्छन् जिब्रो निकाली ॥
जति लामो निक्ल्यो जिब्रो त्यति शक्तिशाली।
किसानले बिउ रेल्छन् जिब्रो निकाली ॥१

त्यो आकाशमा एक्लै जुन किन हाँस्यो होला।
मकैभित्र बसी घुन किन हाँस्यो होला ॥
जहाँ बसे पनि ठूलो ठूलै हुन्छ काका ।
नत्र भेडामाथि ऊन किन हाँस्यो होला ॥२

थापे जति सबै पैसा चोऱ्यौ र त घाटा लाग्यो ।
सारा गोटी त्यसै झ्याप्पै सोऱ्यौ र त घाटा लाग्यो ॥
ऋण भन्या ऋणै हुन्छ यहाँ जति तिरे पनि ।
पिए जति सिनित्तै बेहोऱ्यौ र त घाटा लाग्यो ॥३

चिप्ले कारभन्दा एल् पी गाडी मनपर्छ ।
ठण्डी हुँदा मन्डी अनि राडी मनपर्छ ॥
बगैँचाको फूलभन्दा रङ्गीन भएपछि ।
नेताजीको कोमल झुस्स दाडी मन पर्छ ॥४

गाँजा पिई लेख्न बसेँ लेख्न आएन ।
भावुक भन्दा कान्ला खसेँ लेख्न आएन ॥
प्रकृतिमा धनी देश गाउँ बेसी छन् ।
एकान्त त्यो वन पसेँ लेख्न आएन ॥५

-विदुर खनाल
कक्षा १०

## नेपाल

*-भुजङ्गप्रयात*

बढोस् लक्ष्यमाथि दुई पाउ आज
नरोकोस् कसैले सबै देऊ साथ ।
भुली शत्रुता एक हुन्छौँ मिलेर
सबै चाडपर्व मनाऔँ मिलेर ॥१

उडेको यहीँ आज डाँफे म देखुँ
गुराँसै फुलेको बगैँचा म पाऊँ ।
नहोस् युद्ध कैल्यै सधैँ शान्ति छाओस्
अनि कोइली शान्तिकै गीत गाओस् ॥२

बिहानी प्रभाले नयाँ ज्ञान पाई
कुना कन्दरा पुग्छु लौ घुम्नलाई ।
सबै चित्तलाई खुसी पार्न ऐले
दुखीको सबै भाव बुझ्नु छ मैले ॥३

यहाँ भाव गङ्गासरी छन् सबैको
हिमाली छ हाँसो खुलेको सबैको ।
छ राम्रो तराई पखेरा र भेक
कतै देश हो स्वर्गको खण्ड एक ॥४

यही राष्ट्रमा नै खुले नेत्र मेरा
यही देशबारे रचौँ काव्य सारा ।
म छु आज सानो छ सानो विचार
मुटुमाझ नेपाल राखेँ विशाल ॥५

-नितीश बराल
कक्षा ७

# मुक्तकहरू

हामीले नै तिमीलाई अल्ला बनायौँ ।
मूर्ति भनि माटो मुछी डल्ला बनायौँ ॥
कति बेकुप् प्रभु तिमी जे-जे भन्यो मान्ने ।
भजन भनी पैसा टिप्ने हल्ला बनायौँ ॥१

तिम्रो निधारमा विदेशी धुलो देख्दैछु ।
तै पनि त्यो नाक ठूलो देख्दैछु ॥
कोट पाइन्ट राम्रै लाग्यो उपहारै होला ।
घुँडातिर मुसाको दुलो देख्दैछु ॥२

लड्नुपर्छ विचारले कायर नबन ।
रिसाएर एकैचोटि फायर नबन ॥
वैचारिक क्रान्ति राम्रो ड्याङ्डुङ्भन्दा ।
रत्नपार्कमा जलाउने टायर नबन ॥३

उहाँ आफैसँग किन डराउनु भयो ।
ठूलो आफ्नो भुँडीले थर्थराउनु भयो ॥
घुस खाने मुखलाई पक्कै थाहा रैछ ।
त्यसैले त बोलीमा लर्बराउनु भयो ॥४

-चान्तर्लान्ताद्य शर्मा
दिव्यधाम

अनुकूल हुँदा पैले ताली चटायौ ।
जब दुःखबीच परेँ गाली चटायौ ॥
वाक्यलाई अस्त्रसरी तिखारेर छोड्यौ ।
मेरो कोमल मुटुलाई फाली चटायौ ॥१

भित्र आगो सल्किएर चित्त जल्न लाग्यो ।
पग्लिएर स्निग्ध भई देह गल्न लाग्यो ॥
आफ्नै बस्ने घर जल्दा कति पीडा हुन्छ ।
हस्यांफस्यां गर्दै छिटै प्राण चल्न लाग्यो ॥२

काट्न लाग्दा पनि मान्ने बोको हुँदैन ।
मर्नलाई कसैको नि धोको हुँदैन ॥
वेदना र बाध्यतामा हार मान्नै पर्छ ।
आँशु झार्दा मात्रै एक थोपो हुँदैन ॥३

माया भन्ने वस्तु कैल्यै सानो हुँदैन ।
जुनीभर नबोले नि विरानो हुँदैन ॥
अनमोल समुद्रका रत्नलाई हेर ।
माया जोख्ने यहाँ पाथी मानो हुँदैन ॥४

-अनमोल धिताल
कक्षा ७

## भगवान् शिव

*-झ्याउरे लय*

कैलासवासी हे मेरा शिव गर्दैछु आरति ।
अज्ञान मेरो हटाइ देऊ बनाई सारथि ॥

नन्दि र भृङ्गि छन् तिम्रा गण अनेक थरिका ।
मानव सारा पुकार गर्छन् संसार भरिका ॥

छन् पुत्र तिम्रा गणेश अनि कुमार छन् अरे ।
पार्वती साथ बस्दछिन् अनि वाहन नन्दि रे ॥

तीन् ओटै भुवन् रक्षक भयौ पालक तिमी हौ ।
अज्ञानी दुःखी सबैको मर्म बुझ्ने नै तिमी हौ ॥

समुद्र मन्थन हुँदामा शिव निस्कियो धेरै विष ।
निलेर पनि शान्ति मिलेन रहेछ धेरै रिस ॥

बाघको छाला नागको माला त्रिशुल बोकेका ।
शिरमा चन्द्र गङ्गाले पनि तिमीलाई छोपेका ॥

-सुशोभन कुँइकेल
कक्षा ६

## शिवजीको पनि यस्तो हुन्छ ?

विष्णोरागमनं निशम्य सहसा कृत्वा फणीन्द्रं गुणं
कौपीनं परिधाय चर्म कठिनं शम्भौ पुरो धावति ।
दृष्ट्वा विष्णुरथं सकम्पहृदयः सर्पोऽपतद्भूतले
कृत्तिर्विस्खलिताह्रियानतमुखोनग्नोहरःपातुःवः॥
-ॐ नमः पार्वतीपतये हरहर महादेव ॥

## छेस्काहरू (मूर्ख)

छद्मभेषी धूर्तहरू
हेर्दैमा अमूर्तहरू ।
अस्तित्व खेती गर्छन्
अशुभ मुहूर्तहरू ॥१

साधु भैँ लोकमा हिँडेका
पैसाको भोकमा हिँडेका ।
यी लोभी कदर्यहरू
खै के झोकमा हिँडेका ॥२

कत्ति नपढेको
जीवनमा लडेको ।
भाग्यले नै होला
आकाश चढेको ॥३

गिर्नुसम्म गिरेको
भुइँभित्रै छिरेको ।
तर पनि घाँटीमा
रामनाम भिरेको ॥४

- नीराजन रिमाल
कक्षा ६

## मुक्तकहरू

म आफ्नै घर बनाउँछु ।
ऊ त्यो डाँडा पर बनाउँछु ॥
तिमीलाई राम्रो लाग्ला न लाग्ला ।
साँच्चै भर्खर बनाउँछु ॥१॥

सम्बन्ध रगतको बन्न सक्छ ।
गोली लागी खतको बन्न सक्छ ॥
युद्ध चल्दा नेपाल भारको ।
नेपाल पनि भारतको बन्न सक्छ ॥२॥

मैले देशको विकास गरिन ।
किन कि कुनै प्रयास गरिन ॥
खै के हन्छ के आजकल ।
देशप्रति मैले विश्वास गरिन ॥३॥

धेरै बोल्ने बाचाल हुन सक्छ ।
उसको बोलीमै जाल हुन सक्छ ॥
बिचार गर है बेचिएला फेरि ।
उसको नामै दलाल हुनसक्छ ॥४॥

-सुलोचन कुँइकेल
कक्षा १०

सहयोग बुझिन्न तिम्रो सहकारी नबन
बिक्दैन तिम्रो कुनै चीज व्यापारी नबन।
दिन प्रतिदिन मर्दैछन् सज्जनहरू
भगवान्मा समर्पित पुजारी नबन ॥

कस्तो न कस्तो जीन्दगानी रहेछ
तलै मात्रै झर्न खोज्ने पानी रहेछ ।
राम्रो त कत्ति पनि छँदै छैन यार
अचेतन र बैमानी रहेछ ॥

उघारेँ आँखा खाली भेट्टाएँ
गन्तव्य चुनेँ उकाली भेट्टाएँ ।
आफ्नो जीवन उपमा रोजेँ
झरेको फूलको डाली भेट्टाएँ ॥

थाहा छैन निराश हुँदा कस्तो हुन्छ ?
झर्नै आँटेको फूल जस्तो हुन्छ ।
जनावरले पनि लिन सक्ने
हावा जस्तै सस्तो हुन्छ ॥

-गौरव खतिवडा
कक्षा ७

## ससुरालीमा कति दिन बस्दा राम्रो

श्वशुरगृहनिवासः स्वर्गतुल्यो नराणां
यदि भवति दिनानि त्रीणि पञ्चाथ सप्त।
दधि –मधु- घृत- भक्ष्य-क्षीरसारप्रवाहः
तदुपरि निवसेच्चेत् पादरक्षाप्रयोगः ॥

## शरद् ऋतु

*-इन्दिरा छन्द*

छ शुभकामना हे दर्शौं तिमी
सकल जीवमा शान्ति द्यौ तिमी ।
प्रण म गर्दछु शान्ति ल्याउने
जगत यो रहोस् शान्ति छाउने ॥१

सब मिलेर नै गान गाउँछौं
कलमले कथा लेखी आउँछौं ।
सब चकित छन् शान्ति मार्गमा
सकल जागृतै काम गर्नमा ॥२

कुसुम फुल्छ यैं बार बारमा
मह बनाउँछन् मौरी घारमा ।
कलियुगै अहो फूलमा पनि
किरण छैन क्यै फूलका पनि ॥३

झलल बल्दछन् दीप मार्गमा
भजन गर्दछन् मूर्ति चार्टमा ।
पुरुष भारीको भार काँधमा
नलिई लाग्छ को गाउँ साँझमा ॥४

शहर गाउँमा स्वच्छ ठाउँमा
झलल बल्दछन् बत्ति साँझमा ।
सरर वायुको दिव्य तागत
नमन गर्दछन् उच्च पादप ॥५

कति कथा यहीँ लुक्छ ठाउँमा
थकित छन् तिनै नाउँ-नाउँमा ।
शरदका कती गान गाउँ म
शरद नै हिडौंस् गाउँ ठाउँमा ॥६

-सुरज सापकोटा
कक्षा ८

## देवघाट

*-तोटक छन्द*

स्थल हो अति पुण्य सुधा यही नै
महिमा पनि गाउन सक्दिन खै ।
यहीँ देव र देवी नुहाउँदछन्
सब यो जगमा अति व्यापक झन् ॥

यहीँ देवल छन् अनि मन्दिरका
अति सुन्दर हुन् मन मोहकका ।
अनगिन्ती निकेतन आश्रममा
सब संस्कृत पाठन हुन्छ यहाँ ॥

सब वैष्णव शैव सबै जनको
यही नै सबको छ समष्टि थलो ।
यहीँ गाउँदछन् सब वेद ध्वनी
छ महेश गलेश्वर आश्रम यीं ॥

हिम पर्वतबाट बगेर नदी
यहीँ आई मिलेर त्रिशूली भई ।
सब भक्तहरू यही स्नान गरी
सब स्वर्ग पुऱ्याउँछ पाप हरी ॥

जलरूप धरी यही ज्ञान कुवा
कति ज्ञान लिने गुणका बटुवा ।
सब तृप्त निराश हटाइदिने
यस देवपुरी सब विश्व चिने ॥

यहीँ मानवको गुण सृष्टि भयो
परराष्ट्रमणि यही नै हुन गो ।
यही नै कवि काव्य निवास भयो
तनहूँ थल गण्डकी अञ्चल यो ॥

-सुरेशनारायण गौतम
कक्षा ६

## हाम्रो देश

*-शिखरिणी छन्द*

जहाँ छन् सेता ती अटल जलदाता हिमगिरि,
जहाँ रम्छन् मौरी कुसुमसित बस्दै हरघडी ।
जहाँ बग्छिन् गङ्गा सललल गरी मस्त सुरमा,
जहाँ ती पंक्षीले हरसमय नाच्छन् वनमहाँ ॥१॥

यहाँ जन्मे राजा जनक भृकुटी बुद्ध पनि ती,
यहीँ जन्मिन् गौरी जब अरनिको भानु, भृकुटी ।
यहाँ छन् कर्णाली, अरुण, सुनकोशी र त्रिशुली,
यहाँ बस्दै रम्छन् विनय छरँदै पर्वतचुली ॥२॥

जहाँ जम्छन् चीसा सुलभजल ती तालहरूका,
त्यसैले मेटिन्थ्यो चिरतक तृषा जीवहरूका ।
जहाँ डाँडाकाँडा हरित रङका वृक्षहरू छन्,
जहाँ नौलानौला नव किसिमका शिल्पहरू छन् ॥३॥

जहाँ चल्छन् हावा सुमधुर बनी मन्दगतिमा,
जहाँ खेल्छन् डाँफे हरदिन लतापूर्ण वनमा ।
यही नै पूर्खाको अमृतमयझैँ पुण्य थल हो,
यही हाम्रो प्यारो रमणमय नेपाल घर हो ॥४॥

-किरण रिजाल
कक्षा-८

## भयानक दृश्य

*-मात्रिक लय*

कालो कालो ठूलो झ्याम्ले
भुत्ला राडीजस्तै फ्याङ्ले ।
डर पनि लाग्यो राती एक्लै
पार्लाजस्तो लौ पुर्लुक्कै ॥

चउर हरियो कालो बन्थ्यो
जुनको टहटह चीसो हुन्थ्यो
मेरा साथी कोही छैनन् ।
आफु अगाडि केही छैनन् ॥

यस्तै लाग्यो मनमा फेरि
हिँड्दै जान्थेँ मार्ग अँधेरी ।
दायाँबायाँ हेर्दै भागेँ
लौरी टेक्दै बाटो लागे ॥

अलि पर पुग्दा बज्यो बाह्र
एक्छिन् बस्ने हुन्छ विचार ।
बस्दै गर्दा कालो मान्छे
भन्दै आयो बाबू कान्छे ॥

लुगलुग काँपे गोडा मेरा
देखिन थाले बाख्रा भेडा ।
दाह्रा लामो सातै हात
गर्नै लाग्यो लौ उत्पात ॥

खप्परमात्रै हड्डीहड्डी
च्याँच्याँचूँचूँ डाकिनि कड्की
देखिन थाले भूतपिशाच
रोकिन लाग्यो मेरो सास ॥

नाच र गाना गर्दै आए
मेरा खुट्टा च्याप्प समाए ।
झोसेँ आगो कोरि सलाई
कूले ठोके छोडि मलाई ॥

-विधान आचार्य
कक्षा ८

## गजल

*-भुजङ्गप्रयात*

नहेर्नू मलाई दया चाइँदैन ।
कुनै प्रेम सस्तो ममा पाइँदैन ॥१

म एक्लो छु एक्लै सधैँ बस्न पाऊँ ।
जति हान गोली अहँ आइँदैन ॥२

रुखो छु रसिलो ममा चित्त छैन ।
कुनै गीत मीठो यहाँ गाइँदैन ॥३

कयौँ बित्तछन् जीन्दगी एक यात्रा ।
कसैसँग माया कतै लाइँदैन ॥४

न आओ मलाई सधैँ हेर्न कोही ।
सुकेको पँधेरी बुझ्यौ धाइँदैन ॥५

-श्रीधर सुवेदी
कक्षा ९

शत्रुमाझ बसी कहिल्यै रुन चाहन्न म ।
निर्दयी र बैगुनीको गुन चाहन्न म ॥१

स्वतः हार हुन्छ मेरो जुध्नु मैले बेक्कार छ ।
युद्ध गरी दुनियाको खुन चाहन्न म ॥२

आज राती सपनीमा पिताजीको दर्शन पाएँ ।
हर्षित हुँदा विरहको धुन चाहन्न म ॥३

सानै छु म यति बेला धेरै ठूलो बन्नु छैन ।
अमेरिकी राष्ट्रपति हुन चाहन्न म ॥४

आवश्यक नहुँदा त साथ दिए जस्तो गर्छौ ।
नचाहिने कुरा गर्छौ जुन चाहन्न म ॥५

-विनोद पोखरेल
कक्षा ९

## गजल

आँशु पिई बाँच्नुभन्दा मर्न पाए हुन्थ्यो ।
स्वार्थी समाजबाट पर सर्न पाए हुन्थ्यो ॥१॥

स्वमहिमा लत्याएर बारम्बार मर्नुभन्दा।
भ्रमरको डसाइपूर्व झर्न पाए हुन्थ्यो ॥२॥

नीच भई खोक्रिएर परजीवी बन्नुभन्दा ।
अचेतन पशु बनी चर्न पाए हुन्थ्यो ॥३ ॥

अस्तित्व नै हराएर नाउँ, जाति गुम्नुपूर्व ।
सती सरी आत्मदाह गर्न पाए हुन्थ्यो ॥४॥

निस्सार यो जीवन हाड छालामा रम्नुभन्दा ।
समर्पित भै 'विष्णु'चरण पर्न पाए हुन्थ्यो ॥५॥

- विष्णुहरि भट्टराई
कक्षा १०

# टुहुरो बालक

*- वसन्ततिलका छन्द*

आमा बिना दिनहरू कसरी बिताऊँ
बाबा बिना सुखहरू कसरी म पाऊँ ।
माया र प्रेम ममता सबले ठगेको
हुँ एक बालक दुखी टुहुरो बनेको ॥१॥

हेप्छन् अनाथ टुहुरो किन बाँच्नु भन्दै
भन्छन् नबाँच्नु तिमीले बरु मर्नु चाँडै ।
निश्वास आशभर गाँस दिलाउने को ?
यो प्राण कष्टबिच जन्म दिलाउने को ? ॥२॥

माता पिता हजुरबा बहिनी र दाइ
छैनन् सबै मरिसके ममता मिटाई ।
छैनन् प्रयोजन भने धनी सभ्यमाझ
हामी अनाथ टुहुरो किन बाँच्नु आज ॥३ ॥

फाटेछ वस्त्र तनमा नव वस्त्र पाऊँ
चिन्ता छ धेर मनमा अब हर्ष पाऊँ ।
बह्मा विधातृ किन सृष्टि गऱ्यौ मलाई
बस्नै पऱ्यो करुण गीत यहाँ सुनाई ॥४॥

के पाउँथे घर म बस्न र बाँच्नलाई
छानो म मान्छु नभ,आसन धर्तीलाई ।
धूलो धुवाँ मलिन वायु लिएर बाँच्छु
छाती चिरिन्छ रविले दिन रात रुन्छु ।५॥

-कृष्णप्रसाद पौडेल
कक्षा १०

## गजल

हिंड्न थालेँ जीन्दगीमा आश देखेपछि ।
कैलेकाहीँ हर्ष परिहास देखेपछि ॥१

हैन रैछ वस्तु तथ्य मैले देखे जति ।
सत्य बुझेँ, संघारको लास देखेपछि ॥२

ईर्ष्या, मोह, शोक, डाह, रिस जताततै ।
सबै बुझेँ आफ्नै उठिबास देखेपछि ॥३

खिन्न हुन्थेँ भित्रभित्रै जलिरह्यो मन ।
टोलाएछु जुनेली आकाश देखेपछि ॥४

एक्लै थिएँ जस्तो लाग्थ्यो संसारको वन ।
बुझ्यो मन सबै इतिहास देखेपछि ॥५

-सन्देश लामिछाने
कक्षा ७

कालो कोट लगाएर नेता बन्छन् कोही ।
अन्त गति नपाएर नेता बन्छन् कोही ॥१

यता उता कता कता पुग्ने मान्छेहरू ।
सारा इज्जत सेलाएर नेता बन्छन् कोही ॥२

लुटपाट गर्न पनि हाकाहाकी सक्ने ।
जनता भालु नचाएर नेता बन्छन् कोही ॥३

बसी बसी खाँदा यहाँ बोसो बढेको छ ।
घ्याम्पे भुँडी लुकाएर नेता बन्छन् कोही ॥४

'प्रकाश' परोस् सबैतिर ईश्वरको दृष्टि ।
खोया बिर्के पियाएर नेता बन्छन् कोही ॥५

-प्रकाश उपाध्याय
कक्षा ६

## गजल

आशा लिई काम गर निराश नबन ।
जिन्दगीमा त्यसै ज्युँदो लास नबन ॥१

आफैँ तिमी खुसी होऊ छाती फुलाई ।
पराइको गोडा मोल्ने दास नबन ॥२

स्वाभिमानले बाँच सधैँ इज्जत कमाई ।
हाँसी मजा लिने उपहास नबन ॥३

'सुरज'जस्तै बिहानीमा प्रकाश छर्नु छ ।
मात्रै तिमी मृत्युको एक गास नबन ॥४

- सुरज सापकोटा
कक्षा ६

# पानी

-गद्य

पानी जिन्दगानी हो,
रसिलो जवानी हो,
अनि विश्वसृष्टिको कहानी हो ।

आकाशबाट पग्रिएका,
जलधरका रहरहरू,
असारे निर्झरहरू र
नगर नगरका
खबर बन्ने पानी
साँच्चै सुनौलो बिहानी हो ।
पानी जिन्दगानी हो,
रसिलो जवानी हो,
अनि विश्वसृष्टिको कहानी हो ।

भौतिक शरीरका
नस-नसमा सलल बग्दै
मलिलो र रसिलो शरीरमा
प्राण खेती गर्दैछ ।
अमृत भर्दैछ
प्यासीको प्यास मेट्न
पीयूषको स्वादमा आउँछ ।
हतभागीहरूका निम्ति पनि
टोड्कामा किरा खेल्दै गिजोलिई
काकाकुलको खुराक बन्दैछ
त्यसैले पानी
प्रकृतिको रानी हो ।
पानी जिन्दगानी हो,
रसिलो जवानी हो,
अनि विश्वसृष्टिको कहानी हो ।

- केशव पोखरेल
कक्षा १०

# मुक्तकहरू

माया धेरै भयो र त पोखिएर गयो ।
बिम विना तराजुमा जोखिएर गयो ॥
पुग्ने हुनुपर्छ सबै कुरा डुब्ने होइन ।
सामान जस्तै मूल्य तोकिएर गयो ॥१॥

भैगो सुन्दर विशाल दरबार चाहिँदैन ।
हारको स्वीकार गरिसकेँ तरबार चाहिँदैन ॥
एटलस जस्तो माया तिमीभित्रै राखिदेऊ ।
एक्लै जिउँछु जिन्दगीमा आधार चाहिँदैन ॥२

जताततै वन विनाशले लाभ घट्दैछ ।
हरियाली छैन मानिसको चाप बढ्दैछ ॥
दुःख लाग्छ वाफ खपिनसक्नु छ ।
थुप्रै सूर्य उदाए जस्तो राप बढ्दै छ ॥३

गल्ती कसको हुँदैन र होला हुनसक्छ ।
चान्स देऊ एकपटक आकाश छुनसक्छ ॥
क्षमा सर्वस्व हो उसले रङ्ग फेर्न के नसक्ला ।
भविष्यमा डोकामा दुध दुन सक्छ ॥४

-प्रभाकर घिमिरे
कक्षा ७

## संस्कृतपद्यानि

*-अनुष्टुप् छन्द*

अस्मिन् लोके सुकार्याणि मनुष्या ये प्रकुर्वते ।
शृण्वन्त्वन्तेवासिनस्तु स्वर्गे गच्छन्ति ते नराः ॥१॥

प्रातःकाले विधानीयं ध्यानं देवस्य पूजनम् ।
लोभः क्रोधश्च मोहश्च त्यजनीयः जनैः सदा ॥२॥

दानं कुर्वन्ति सर्वेऽपि लोकेऽस्मिन् मोक्षप्राप्तये ।
दुःखेषु मानवः कुर्यात् सहयोगञ्च दुःखिनाम् ॥३॥

अध्ययनेन शास्त्राणां ज्ञाता भवति मानवः ।
भयेभ्यश्च मनुष्याणां पाता भवति शङ्करः ॥४॥

देवानां श्रद्धया ध्याने कृते ज्ञानस्य प्रापणम् ।
भवत्येव ह्यतः सर्वे श्रद्धां कुर्वन्तु मानवाः ॥५॥

-सङ्गम पौडेल
कक्षा-८

## हाइकु

कस्तो जीन्दगी
न वारी छ न पारी
बीचमा नदी ॥

फक्रेको फूल
नटिपे पक्कै झर्छ
विचार गर ॥

क्षमा गर्दछ
कातर सम्झेर होला
देख्दछ माथि ॥

बालिन्छ बत्ती
गरिन्छ पूजा स्तुति
दर्शन मिल्ला कि ॥

हजारौँ मोड
जताजतै जीवनमा
बुझ्न छ गाह्रो ॥

-शिवहरि नेपाल
कक्षा ६

## संस्कृतगजलम्

सुन्दराणि मन्दिराणि पश्य बालक ।
उन्नतानि वै गृहाणि पश्य बालक ॥१

देवघट्टमेतदस्ति सुन्दरं कियत् ।
आश्रमाणि च प्रियाणि पश्य बालक ॥२

प्रातरेति सूर्य एव पूर्वमण्डले ।
चम्कितेन काशितानि पश्य बालक ॥३

संस्कृतस्य सेवनेन उन्नता वयम् ।
धार्मिकानि पुस्तकानि पश्य बालक ॥४

-ऋषिराम पौडेल
कक्षा-७

## संसार मिथ्या हो

*-अनुष्टुप् छन्द*

यो संसारभरि व्याप्त एकै वस्तु छ नित्य जो ।
यो बिगार्नयहाँमान्छे बन्न सक्ला समर्थ को ? ॥१

आत्मा शरीरको स्वामी अविनाशी र निर्जर ।
नाशवान शरीरै छ, होऊ सङ्ग्राम तत्पर ॥२

आत्मा मर्ने र मार्ने हो भन्ने ती मूर्ख हुन् सबै ।
मर्दैन कहिल्यै आत्मा अविनाशी, सुखी सधैँ ॥३

आत्मा जन्मन्न मर्दैन, अविकारी र नित्य छ ।
यस्तो बुझ्ने छ जो व्यक्ति कसरी मर्छ मार्दछ ? ॥४

न काट्ला खुकुरी धार न आगो पोल्न सक्षम ।
भिजाउन्न अरे पानी हावामा पनि के दम ? ॥५

न काटिन्छ न पोलिन्छ न भिज्छ न त सुक्दछ ।
सधैँ सुस्थिर आनन्द आत्मा यो सब व्याप्त छ ॥६

जन्मने मर्छ आखिर भन्ने थाहा हुँदाहुँदै ।
यसरी शोक के गर्ने ? व्यर्थ लाग्छ बुझे सबै ॥७

जन्मेका जति नै मर्छन् मरेका जन्मने पनि ।
यही हो विश्वको ऐन नगर्नू शोक क्यै पनि ॥८

-सूर्यमणि जमरकट्टेल
कक्षा ७

## छेस्काहरू

भगवान्को पूजा भएन
किन कि खर्बुजा भएन ।
क्वै मुख फेर्न व्रत गर्छन्
मीठो सब्जी र भुजा भएन ॥१

बोतल बोक्यौ गीत गाएर
धोक्नु धोक्यौ गीत गाएर ।
संसार हाँक्ने गुड्डी छाँटेर
खोक्नु खोक्यौ गीत गाएर ॥२

नराम्रो नमान केही भन्छु ।
लठुवा नठान केही भन्छु ।
झारको नि अस्तित्व हुन्छ ?
हेपेर नहान केही भन्छु ॥३

मलाई हेर्‍यौ आँखा तरेर ।
विरोध गर्‍यौ पर सरेर ॥
तिमी जस्तो यौटै देख्दैछु ।
ढोग्नै पर्‍यो तल परेर ॥४

झुसे दारीमा फूर्ति गर्नेहरू ।
मुखमा दुईमुठी सुर्ती भर्नेहरू ॥
पल्सर हाँकी दादा नबन ।
तल परी पुर्लुक्क मर्नेहरू ॥५

-विशाल सुवेदी
कक्षा १०

## हाम्रो देश

— *मन्दाक्रान्ता छन्द*

अग्ला अग्ला हिमशिखर छन् सालका वृक्ष धेर
डाँडा काँडा वनहरू यहीँ ताल छन् फाँट हेर ।
खोला नाला सरितहरू छन् खर्क छन् लेक बेसी
गाउँछन् रे वनतिर बसी कोइली रुखदेखि ॥१

भुल्छन् रे ती वनभरि सधैँ नम्र भै वृक्ष शाखा
उफ्री उफ्री हरसमयमा खेल्दछन् बाल छावा ।
बास्ना सुँघ्दै कुसुमहरूमा रम्दछन् मौरी आई
नाच्दै हुन्छन् मुजुर वनमा प्रीतिको गीत गाई ॥२

कर्णालीको सलल ध्वनिमा खेल्दछन् मत्स्य लाखौँ
छाहारीमा सुखसित बसी जीव रम्छन् हजारौँ ।
डाँफे मैना शरद वनमा रम्दछन् बास पाई
सारा प्राणी प्रकृतिभरमा घुम्दछन् सास पाई ॥३

झर्ना छाँगा हरितवन छन् पुष्प उद्यान धेरै
झुल्किन्छन् रे हिमगिरिमहाँ सूर्य मुस्कान छर्दै ।
हुर्कन्छन् रे कुसुमहरूमा माहुरी फूल चुस्दै
प्यारो प्यारो सतत युगको रम्य नेपाल हाम्रै ॥४

-विवेकराज भट्टराई
कक्षा ७

## संस्कार ठुलो वस्तु हो

मित्रास्मिन् नगरे महान् कथय कः तालद्रुमाणां गणः
को दाता रजको ददाति वसनं प्रातर्गृहीत्वा निशि ।
को दक्षः परवित्तदारहरणे सर्वेऽपि दक्षाः स्वयम्
कस्माज्जीवसि हे सखे विषकृमिन्यायेन जीवाम्यहम् ॥

## हाइकु

फूल फुल्दैछ,
फक्रिन्छ एकदिन
पछि झर्नेछ ॥

मानव चोला
दुई दिने रमिता
लिटो र पिण्डो ॥

मोटो शरीर
हिँडडुलमा पीर
संसार भीड ॥

ऊ फूल भन्छ
मलाई काँडै लाग्छ
दुःखी जीवन ॥

थुनियो कैदी
निम्त्यायो दुर्घटना
आफैँ कुहियौ ॥

संसार कस्तो ?
कुहिएको फर्सीझैँ
जटिल प्रश्न ॥

सफल हुन्छौ
सकारात्मक सोच
जिन्दगी मस्त ॥

-सफल पौडेल
कक्षा-६

## जन्मभूमिप्रति

*-शिखरिणी छन्द*

रमैं, हुर्कें, हाँसे यहि धरणिको स्नेहवशमा,
बिते मेरा कैयौँ दिन सकलवात्सल्य रसमा ।
मिल्यो न्यानो छानो जलपवन चीसो सरसरी,
म पाऊँ यी मेरी धरणि रसिली देवनगरी ॥१॥

हिमाली हाँसोमा मुसुमुसु थियो दन्त-लहर,
सुगन्धि हावामा सुमनसुरभी भो हरहर ।
बिहानी उड्दैछन् गगनतिर पन्छी वनमहाँ,
म बस्दैथेँ रम्दै दिनदिन खुसी भैकन जहाँ ॥२॥

ठुला धूपी, सल्ला पवनसँग खेल्छन् वनमहाँ,
फुली तोरी मौरी लहर भई उठ्थे अनि जहाँ ।
पहाडी पाखामा मधुरलयको कम्पन छुट्यो,
चरीको बोलीमा लय, सुर मीठो सङ्गीत जुट्यो ॥३॥

शरद्को त्यो स्वच्छ प्रखर रविमा शान्त गगन,
रमायो यो मेरो सब दुःख भुली निर्मल मन ।
थिए भैली होली तिज र दशमी चाड रसिला,
सधैँ रम्दै खेल्दै सकल सब छौँ नित्य हँसिला ॥४॥

-सुशील बाग्ले
कक्षा-८

## नेपाल

*-विद्युन्माला*

आफ्नो प्यारो आफ्नै माटो
राष्ट्रप्रेमी खोज्छन् बाटो ।
डाँडापारी लाग्थ्यो घाम
हाँसिन् आमा जप्दै नाम ॥१॥

मोती माला दिव्य ज्योती
गाँसौँ दाना लाखौँ कोटी ।
एउटै हामी मान्छौँ पर्व
संसारैमा गर्छौं गर्व ॥२॥

बास्ना छर्ने यो उद्यान
लिन्छौँ हामी दिव्य ज्ञान ।
चौँरी डाँफे हाम्रा चिह्न
वैरी सारा पर्छन् खिन्न ॥३॥

छुट्टै हाम्रो भाषा धर्म
नङ्गा धस्दै गर्छौं कर्म ।
रत्नागार प्राणी जाल
शश्वत् बाँचोस् यो नेपाल ॥४॥

-कुबेरप्रसाद भट्ट
कक्षा ७

## असतो मा सद्गमय

-झ्याउरे लय

नश्वर चोला लिएर आज कुन बाटो हिँडौँ म ।
के लिई आएँ के लानुपर्ने के छ त साथमा ॥१

ईशको लीला जन्माइदियौ अँध्यारो संसारमा ।
गुरुकुल आई म पढ्न थालेँ श्रद्धा छ कृष्णमा ॥२

मानव भई मानवलाई बुझ्ने हो कसरी ।
बाँधेको मुठी अन्तिम क्षणमा खोल्नु छ जसरी ॥३

जन्मियौँ हामी गर्नु नै पर्छ मर्नु छ जसरी ।
विचार गरौँ त्यो ब्रह्मलाई पाउने कसरी ॥४

परीश्रम गरी खानु भनेको अमृत खानु हो ।
अज्ञानी भई बाँच्नु भनेको हो नरकमा जानु हो ॥५

चुहुने ताप्के पनि कुनै दिन आउनेछ काममा ।
महेश आश्रम गएर पढौँ नबिक्नु दाममा ॥६

हे सखिहरू आज नै बाट कम्मर कसेर ।
प्राणलाई तोडी पढ्नु नै पर्छ देवघाट बसेर ॥७

-सुशीलचन्द्र अधिकारी
कक्षा ६

## मुक्तकहरू

भँवराले चुसेको फूललाई सोधेँ ।
कोपिलामै लुछेको फूललाई सोधेँ ॥
जीवन कत्तिको सुखमय छ भनेर ।
साँझमा सुकेको फूललाई सोधेँ ॥१

मेरो मन चल्यो हावा आएपछि ।
अझ बढी जल्यो हावा आएपछि ॥
बाल, वृद्ध, युवावस्था हावै त हुन् ।
सुस्त-सुस्त गल्यो हावा आएपछि ॥२

छोटो जीवन गइसक्यो पानी नपिई ।
काल आई लइसक्यो पानी नपिई ॥
यात्रा चल्छ यताउता, गन्तव्य छ कता ।
जाने बेला भइसक्यो पानी नपिई ॥३॥

डोरीमात्र कहाँ ? माया पनि बन्धन ।
अरू कुरा छोड छायाँ पनि बन्धन ॥
स्वतन्त्रता मिल्ला र बाँधिदामा ?
जे-जे हेर्छु दाँया-बाँया पनि बन्धन ॥४

यहाँ आए, बसेँ जानुपर्छ ।
यही घरमा पर्सें जानुपर्छ ॥
जे-जस्तो चल्दैछ आजसम्म ।
तर, फस्नुफर्सें जानुपर्छ ॥५॥

-युवराज ढाहाल
कक्षा ८

## आधुनिक शिक्षाप्रणाली

मूलं पठेत् पुनर्व्याख्यां मूलं व्याख्यां पुनः पुनः ।
पृच्छेन्मध्ये 'किमु ज्ञातम् ?' छात्रैरामिति कथ्यते ॥

वाच्यतां समयोऽतीतः स्पष्टमग्रे भविष्यति ।
इति पाठयतां ग्रन्थे काठिन्यं कुत्र विद्यते ॥

# नौलो बिहानी

*-भुजङ्गप्रयात*

सधैँ ज्ञान खोज्ने म हुँ सद् विवेकी
तर ज्ञानको हैन साकार ठेकी ।
सबै बन्न खोज्छन् कुमार्गी हरामी
त्यसैले म रच्दैछु नौलो बिहानी ॥१

म खोज्दैछु नाफा त्यही मिल्छ घाटो
जता जान खोज्दैछु छेकिन्छ बाटो ।
म बढ्दैछु आफू बनी अग्रगामी
त्यसैले म रच्दैछु नौलो बिहानी ॥२

सबै ह्रास हुन्छन् सबै नाश हुन्छन्
र जो हुन्छ दुःखी सदा दास बन्छन् ।
र संसार बन्दैछ सारा खरानी
त्यसैले म रच्दैछु नौलो बिहानी ॥३

सबै माथि बन्दैछ संस्कार भार
नयाँ नीति भन्दैछ रे काट मार ।
ढले देशको हेर राजा र रानी
त्यसैले म रच्दैछु नौलो बिहानी ॥४

-ईशान सुवेदी
कक्षा ८

## गजल

*-भुजङ्गप्रयात*

सधैँ प्रीतको जीतलाई समाऊँ ।
स्वयं गीतको तालसँगै रमाऊँ ॥१

लिएको छु आशा स्वयंभित्र आज ।
भए शीतको बिन्दुझैँ बन्न पाऊँ ॥२

चलेको छ नीति चलेको छ शास्त्र ।
यही रीतको प्रीतभित्रै म छाऊँ ॥३

भयो हार्न गाह्रो त्यसैले नहारी ।
त्यही जीतको स्वच्छमाला म लाऊँ ॥४

छ संकल्प नौलो डुबी कल्पनामा ।
सधैँ हीतको मार्गबाटै म धाऊँ ॥५

-विवेक पाण्डे
कक्षा ९

## विचार

*-उपजाति छन्द*

विचार हो यो सबमा बलिष्ठ
सम्बन्ध राख्नु यसमा घनिष्ठ ।
हे मित्र प्यारा मनमा गुनेर
महान बन्नु यसमा भुलेर ॥१

विचार जे लिन्छ उसै ऊ हुन्छ
विचार ठूलो गर हे मनुष्य ।
महान बन्छौ अनि नाम चल्छ
हटेर अज्ञान प्रकाश बल्छ ॥२

कञ्जुस बन्ने किन हो र भाइ
विचार गर्ने क्रममा रमाई ।
दिएर शक्ति प्रभुले सबैमा
बाँड्यो भने झन्झन बढ्छ ज्ञान ॥३

महान ज्ञानी अनि शुद्ध मुक्त
महर्षि ध्यानी सब तत्त्व बुद्ध ।
जो-जो भए भूतलमा प्रसिद्ध
थियो सबैसामु विचार शुद्ध ॥४

-पवन न्यौपाने
कक्षा १०

## बालक

*-स्रग्विणी छन्द*

हर्ष स्वच्छन्दमा मुग्ध भै चञ्चल
हात छन् पालुवा झैँ नयाँ कोमल ।
सृष्टिको पूर्व आधार हो बालक
अग्रगामी बनी देश सञ्चालक ॥१॥

दीप्त ज्योति सरी राष्ट्रको दीपक
सभ्यता शान्तिको फूलझैँ बालक ।
दिव्य-सौहार्द-सौन्दर्य-सम्पादक
अर्धवाणीमहाँ लोक आह्लादक ॥२॥

फुल्न द्यौ फूल हो फक्रने कोपिला
प्रेमको दृष्टिले हेर साथी कला ।
मात्र मौका मिले बालको शासन
चल्छ शान्तिसँगै ढल्छ इन्द्रासन ॥३॥

पढ्नुहोस् बढ्नुहोस् खेल्नुहोस् मित्र हो
ज्ञान विश्वास होस् आफूमा भित्रको ।
एक दुर्लभ्य यो जिन्दगी मानव
जुट्नुहोस् उन्नतितर्फ लागौँ सब ॥४॥

बन्नु गान्धी महाबुद्ध झैँ बालक
विश्वबन्धुत्व एकत्वको स्थापक ।
मार्दछौ जीवनी व्यर्थ खाते बनी
बाध्यतासँग गै रुन्छ रे जीवनी ॥५॥

एक भै हातमा हात मिल्नुपर्‍यो
शून्यमा मिल्छ ऊ मात्र जन्मी मर्‍यो ।
कर्म नै सार हो एक संसारमा
लाग साथी सबै दीन उद्धारमा ॥६॥

-परशुराम धिताल
कक्षा ६